# ‘वन’ शब्दमा गढिएको



## संस्कृतभन्दा पहिलाको कथा

नवराज सुब्बा, पिएचडी

प्रि-प्रिन्ट २०२५

# Contents

## ‘वन’ शब्दमा गढिएको संस्कृतभन्दा पहिलाको कथा


**सार**

“वन” भन्ने शब्दलाई प्रायः संस्कृतको तत्सम शब्द मानी जंगल वा अरण्यको अर्थ दिइन्छ। तर किरात समुदाय—विशेष गरी राई र लिम्बुहरू—को भाषा, संस्कृति, र धार्मिक मिथकहरूमा पाइने "बान्तवा", "बनझाँक्री", र "बोन" जस्ता शब्दहरूले देखाउँछन् कि “वन/बन” शब्द संस्कृतभन्दा पनि पुरानो आदिवासी भाषिक तहबाट आएको हुनसक्छ।

यस लेखले तुलनात्मक भाषाशास्त्र (comparative linguistics), मानवशास्त्र (ethnography), र मौखिक इतिहास (oral tradition) को आधारमा “वन” शब्दको उत्पत्ति र प्रयोगबारे पुनर्विचार गर्छ। विश्लेषणले देखाउँछ कि संस्कृतले “वनम्” शब्दलाई मूलतः अपनाएको होइन, बरु किरात–बोन जस्ता आदिवासी भाषाबाट आत्मसात् (linguistic borrowing) गरेको हुन सक्छ।

यसले यो केवल एउटा शब्दको व्युत्पत्तिमा प्रश्न उठाउने काम गरेको मात्र होइन, भाषिक उपनिवेशवाद र आदिवासी सांस्कृतिक ज्ञानमाथि भएगरेका पिसाइ र हडप जस्ता गम्भीर विषयहरूतर्फ पनि संकेत गर्छ। अन्ततः, “वन” शब्दको पुनर्व्याख्या गर्नु भनेको आदिवासी ज्ञान परम्पराको पुनर्स्थापना गर्नु हो।



**शब्दकुञ्जीहरू:** किरात, बोन धर्म, वन शब्द, बान्तवा, जातीय भाषाविज्ञान, भाषिक उधारो, संस्कृत सब्सट्रेट, मुन्धुम, प्रोटो-तिब्बती-बर्मन, शमनवाद, नेपाल आदिवासी संस्कृति

## १. प्रस्तावना

एक शोधपत्र (Rai, 2025) बाट थाहा भयो राई बान्तवा थरको उत्पत्ति बन + तावा अर्थात बन क्षेत्रबाट आएको भन्ने रहेछ। हालसम्मको अध्ययनका आत्धारमा म के विश्वास गर्दछु भने किरातको प्राचीन जनआस्था प्रकृतिपूजा र आत्मापूजा अर्थात शननवादी बोन धर्म थियो। यसैले किरात राई लिम्बू शब्दकोशमा बनझाँक्री, बन/बोन, बनतावा (बान्तवा) शब्दको गहिरो उपस्थिति रहेको छ। यही पृष्ठभूमिमा यो वन शब्दको ब्युत्पत्ति केलाउने र स्थापित मान्यतालाई चुनौति दिने अभिप्रायले यो शोधकार्य अघि बढाएको छु।

"वन" भन्ने शब्द संस्कृतमा "वनम्" को रूपमा पुराना वैदिक ग्रन्थदेखि प्रयोग हुँदै आएको पाइन्छ। यसको सामान्य अर्थ 'जंगल' भए पनि किरात समाजमा यस शब्दको प्रयोग केवल भौगोलिक नभई धार्मिक र सांस्कृतिक प्रतीकका रूपमा पनि देखिन्छ। यसले "वन" को उत्पत्तिलाई केवल संस्कृत मूलमा सीमित राख्न सकिन्न भन्ने संकेत गर्दछ।

बान्तवा थरको उत्पत्तिसँग सम्बन्धित भाषिक र सांस्कृतिक पक्षबारे गरिएको एक अध्ययनबाट थाहा भयो राई बान्तवा थरको उत्पत्ति ‘बन’ + ‘तावा’ अर्थात बन क्षेत्रबाट आएको जाति रहेछ। यसले मेरो मनभित्र खेलिरहेको  परिकल्पना वा जिज्ञासालाई अरू गहिराईमा खोतल्ने अवसर प्राप्त भएको महसुस भयो। यस सिलसिलामा ‘बनतावा’ अर्तात् ‘बान्तवा’ शब्दको जड़ प्रकृति र आत्मापूजासँग गाँसिएको ‘बन’ शब्दसँग सम्बन्धित भएको दाबी गर्दछु। हालसम्मको अध्ययनका आधारमा किरात समाजको प्राचीन धार्मिक आस्था बोन (Bon) धर्मसँग जोडिएको छ—जसमा प्रकृति, आत्मा, र बनलाई केन्द्रमा राखिएको हुन्छ।

संस्कृत भाषामा 'वनम्' शब्दको प्राचीन प्रयोगलाई स्वीकार गर्दागर्दै पनि म के कुरामा जोड दिन्छु भने किरात समुदायमा यसको

प्रयोग भौगोलिक सीमाभन्दा बाहिर धार्मिक–सांस्कृतिक चिनारीका रूपमा रहेको व्याख्या गरिन्छ। यसले यो स्पष्ट पार्छ कि ‘वन’ शब्दको प्रयोग केवल वैदिक संस्कृतिमा सीमित नभई आदिवासी किरात संस्कृतिमा पनि स्वतन्त्र अर्थ र प्रयोग भएको हुनसक्छ।

त्यसैले यो प्रस्तावना खण्डले दुईवटा महत्वपूर्ण कुरा उठाएको छ:

(अ)- राई बान्तवा थरको नाममा रहेको 'बन/बोन' शब्दको ऐतिहासिक, भाषिक, र सांस्कृतिक मूलबारे पुनर्विचार गर्नु आवश्यक छ।

(आ)- ‘वन’ शब्दको उत्पत्ति र प्रयोगलाई केवल संस्कृत व्युत्पत्तिमा सीमित राख्दा आदिवासी ज्ञान प्रणाली र विश्वासलाई बेवास्ता गरिन्छ भन्ने बौद्धिक चुनौती छ।

यसरी हेर्दा, यहाँ प्रस्तावना खण्ड स्पष्ट उद्देश्यसहित प्रस्तुत गरिएको छ—त्यो हो, स्थापित भाषिक–धार्मिक मान्यतालाई पुनः परीक्षण गर्ने र किरात समुदायको मौलिक सांस्कृतिक अर्थ–संरचनालाई उजागर गर्ने।

## २. सैद्धान्तिक ढाँचा

यो अध्ययन भाषाशास्त्रीय र मानवशास्त्रीय अन्तरअनुशासनिक दृष्टिकोणमा आधारित रहेको छ। मुख्यतः भाषिक सम्पर्क सिद्धान्त (Language Contact Theory) र उत्पत्ति भाषाशास्त्र (Etymological Linguistics) का आधारमा "वन/बन" शब्दको उद्‌गम, प्रयोग, र अर्थ संप्रेषणको अध्ययन गरिएको हो।

साथै, शमनवाद र आदिवासी धर्म सिद्धान्त (Shamanistic Religious Theory) पनि यस लेखमा प्रयोग भएको छ, विशेषतः बोन धर्म र किरात मुन्दुम संस्कृति सन्दर्भित गर्नलाई  Horton (1967) र

Eliade (1964) द्वारा प्रतिपादित शमनिक धर्म संरचनाको अवधारणालाई समेत मध्यनजरमा राखिएको छ।

किरात समुदायमा प्रयोग हुने “वन”, “बान्तवा”, र “बनझाँक्री” जस्ता शब्दहरूलाई भाषिक-सांस्कृतिक चिन्ह (linguistic-cultural signifiers) का रूपमा अध्ययन गरिएको छ, जसले Edward Sapir र Benjamin Whorf को भाषा-संस्कृति सम्बन्ध सिद्धान्त (Sapir-Whorf Hypothesis) सँग पनि जोडिन्छ।

भाषाको आदानप्रदान र असरलाई substratum theory (Emeneau, 1956) मार्फत विश्लेषण गरिएको छ — जसअनुसार उच्च भाषाहरूले तल्लो तहका भाषाबाट शब्द, ध्वनि, र संरचना उधारो लिन्छन्।

## ३. शोधविधि

### *३.१. शोध प्रकार*

यो अध्ययन गुणात्मक (qualitative) प्रकृतिको छ, जसले सांस्कृतिक भाषाशास्त्र (ethnolinguistics) र सांस्कृतिक मानवशास्त्र (cultural anthropology) का विधिहरू प्रयोग गर्दछ।

### *३.२. डेटा सङ्कलनका स्रोतहरू*

प्राथमिक स्रोतहरू: किरात समुदायका मौखिक परम्परा (मुन्दुम), बान्तवा/राई भाषिक अभिव्यक्तिहरू, लोककथा, गीतहरू, झाँक्री सम्बन्धित मिथकहरू।

द्वितीय स्रोतहरू: भाषाशास्त्रीय अनुसन्धान (van Driem, Emeneau, Masica), तिब्बती बोन धर्मसम्बन्धी ग्रन्थहरू (Tucci, Hoffman), संस्कृत शब्दकोश (Monier-Williams) आदि।

*३.३. विश्लेषणको विधि*

तुलनात्मक भाषिक विश्लेषण (Comparative Linguistic Analysis): किरात भाषामा प्रयोग हुने "बन/वन" ध्वनिहरूको Proto-Tibeto-Burman भाषाहरूसँग तुलनात्मक अध्ययन।

ऐतिहासिक पुनर्निर्माण (Historical Reconstruction): किरात भाषामा वन सम्बन्धी शब्दहरूको ऐतिहासिक रूपान्तरण पहिचान गर्ने प्रयास।

सांस्कृतिक भाषिक व्याख्या (Ethnolinguistic Interpretation): किरात समुदायमा "वन" शब्दले बोकेको प्रतीकात्मक अर्थ विश्लेषण।

*३.४. सीमा*

यस अध्ययनमा प्रयोग गरिएका मुन्दुम मौखिक स्रोतहरूमा लिपिबद्ध प्रमाणको अभाव, र किरात भाषाको लिखित अभिलेखको सीमितता प्रमुख चुनौती हो। तथापि, मौखिक परम्परा, सांस्कृतिक निरन्तरता, र तुलनात्मक भाषिक साक्ष्य प्रयोग गरेर विश्लेषण सन्तुलनमा राखिएको छ।

## ४. किरात समुदाय र बोन परम्परा

किरात समुदायहरू—जस्तै राई, लिम्बु, याक्खा, र सुनुवार—नेपालको पूर्वी पहाडी क्षेत्र तथा दक्षिण–पश्चिम तिब्बतको आसपासका भौगोलिक भूभागमा प्राचीनकालदेखि बसोबास गर्दै आएका आदिवासी जातिहरू हुन्। यी समुदायहरूको सांस्कृतिक र धार्मिक पहिचान विशिष्ट र गहिरो छ, जुन दक्षिण एसियाली धार्मिक प्रणालीहरूभन्दा पृथक रूपमा विकास भएको छ।

यी समुदायहरूको मौलिक तथा परम्परागत धर्म ‘बोन धर्म’ हो, जुन प्राचीन तिब्बती–हिमालीय धार्मिक परम्पराको एक हिस्सा हो र सामान्यतः बुद्ध धर्मभन्दा पुरानो मानिन्छ (Hoffman, 1961; Tucci, 1980)। बोन धर्मको केन्द्रमा शमानी विश्वास प्रणाली रहन्छ, जसमा प्रकृति, आत्मा, पूर्वजको पूजा, र धर्तीका पवित्र तत्त्वहरूको आराधना गरिन्छ। यस धर्ममा वन, नदी, ढुङ्गा, झरना, गुफा, र पहाडहरूलाई केवल भौगोलिक वस्तु होइन, पवित्र शक्तिको निवासका रूपमा मानिन्छ।

बोन परम्पराका धार्मिक क्रियाकलाप र अनुष्ठानहरू "वन" शब्दसँग गहिरो रूपमा सम्बन्धित छन्। वन (ban) केवल एक भौगोलिक क्षेत्र नभई आध्यात्मिक र सांस्कृतिक चिन्ह हो, जहाँ शमनहरू—जसलाई किराती संस्कृतिमा ‘नक्छोङ’, ‘फेदाङ्मा’, वा ‘साम्बा’ भनिन्छ—ले आत्मा वा प्रकृति देवताहरूसँग संवाद गर्ने अनुष्ठानहरू सम्पादन गर्दछन्। यस्ता अनुष्ठान स्थलहरूलाई ‘ritual loci’ भनिन्छ, जसमा गुफा, ढुङ्गा, पानीका झरना, र विशेषतः वन क्षेत्रहरू अत्यन्त महत्वपूर्ण छन्।

यसरी हेर्दा, किरात समुदायको सांस्कृतिक चेतना, भाषिक संरचना, र धार्मिक प्रथा सबैमा "वन" शब्दको प्रयोग केवल शाब्दिक वा संस्कृत व्युत्पत्तिमा सीमित नभई, आदिवासी बौद्धिकता (indigenous epistemology) मा आधारित रहन्छ। ‘बान्तवा’ जस्ता थर नामहरूमा "बन" शब्दको उपस्थिति तथा मौखिक परम्परामा यसको दोहोरिएको प्रयोगले यो कुराको प्रमाण दिन्छ कि किरात समाजमा "वन" शब्दले गहिरो सांस्कृतिक महत्व बोकेको छ।

यस सन्दर्भमा, "वन" शब्दलाई केवल संस्कृतको ‘वनम्’ भनेर व्याख्या गर्नु वा त्यसको प्रयोगलाई वैदिक सन्दर्भमा मात्र सीमित गर्नु किरातहरूको मौलिक ज्ञान परम्परालाई बेवास्ता गर्नुजस्तै हो। किरात समुदायको धर्म, भाषिक संरचना, र सांस्कृतिक स्मृतिमा रहेको "वन"

शब्दको प्रयोगले वैकल्पिक उत्पत्तिको सम्भावना र आवश्यक पुनर्विचारको माग गर्दछ।

### **५. किरात भाषामा “वन/बन” ध्वनिको मूल**

किरात भाषाहरू—विशेष गरी बान्तवा, सम्शारिक राई, र लिम्बु भाषाहरू—भित्र "बन", "वन", वा "बोन" जस्ता ध्वनिहरूको आवृत्ति उल्लेखनीय रूपमा पाइन्छ। यी शब्दहरू भाषिक रूपमा समान लागे पनि, तिनीहरूको प्रयोग सन्दर्भ, समुदाय र सांस्कृतिक व्यवहारसँग गहिरो रूपमा गाँसिएको छ।

किरात भाषामा देखिएका “बन/बोन/वन” सम्बन्धी शब्द र अर्थहरू

| **शब्द** | **भाषिक समूह** | **अर्थ** |
|---|---|---|
| बान्तवा | राई | “वनबाट आएका” अथवा वन–सम्बद्ध जातीय परिचय |
| बनझाँक्री | सबै किरात | वनमा बस्ने शमानी/आध्यात्मिक गुरु |
| बोन | लिम्बु/तिब्बती | आदिवासी शमानी धर्म |
| बनमाया / बनदेवी | लोक गीत/मिथक | आत्मा, वनदेवी, संरक्षक शक्ति |

यी शब्दहरू किरात भाषिक परम्परामा केवल संज्ञा वा विशेषणको रूपमा मात्र प्रयोग हुने होइनन्, बरु तिनीहरूले सांस्कृतिक सम्झना (cultural memory) र आध्यात्मिक संरचनालाई समेत प्रतिनिधित्व गर्छन्। जस्तो कि ‘बनझाँक्री’ शब्दले वनभित्र बस्ने शमानी शक्तिको उपमा दिन्छ भने, ‘बोन’ शब्दले लिम्बु तथा प्राचीन तिब्बती समुदायहरूमा प्रचलित मूल धर्मको नामलाई जनाउँछ (Tucci, 1980)।

*भाषाशास्त्रीय विश्लेषण: ध्वनि विकास (Sound Evolution)*

भाषाशास्त्रीय दृष्टिले हेर्दा, यी शब्दहरू Tibeto-Burman भाषासमूह अन्तर्गत पर्ने 'Proto-Kiranti' तहबाट विकसित भएका हुनसक्छन् (van Driem, 2001)। भाषिक विकासक्रममा, ban > van > wa/n जस्तो ध्वनि रूपान्तरण हुने प्रक्रिया सामान्य मानिन्छ, जुन भाषाको उच्चारण, क्षेत्रीय विविधता र समयक्रमसँगै हुँदै जान्छ।

उदाहरणस्वरूप, Proto-Kiranti भाषामा रहेको ban ध्वनि क्रमशः van हुँदै wa वा n मा परिणत भएको पाइन्छ, जुन भाषिक प्रवृत्तिमा हुने फोनेटिक शिफ्ट (phonetic shift) हो। यो परिवर्तनले किरात भाषाहरूमा आज देखिने विविध ध्वनि रूपहरू (variants) को व्याख्या गर्न मद्दत गर्छ।

यस आधारमा, किरात समुदायमा "बन" वा "बोन" शब्दको व्यापक प्रयोग केवल संस्कृतको "वनम्" बाट सापटी लिएको होइन भन्ने तर्क गर्न सकिन्छ। यसको सट्टा, यी ध्वनिहरूको उत्पत्ति सम्भवतः किरात आदिवासी भाषासंस्कृतिको मौलिक स्वरूपबाट आएको हो, जसले पृथक ध्वनि विकास र सांस्कृतिक सन्दर्भलाई प्रतिबिम्बित गर्छ।

*टिप्पणी:*

किरात भाषाहरूमा पाइने बन, वन, वा बोन जस्ता शब्दहरूको आवृत्ति, अर्थ, र ध्वनि विकासले देखाउँछ कि यी शब्दहरू केवल भाषिक संरचना नभई सांस्कृतिक पहिचानका संवाहक पनि हुन्। ध्वनिको उत्पत्तिमा भएको प्राचीनता, क्षेत्रीय भिन्नता, र धार्मिक सन्दर्भले गर्दा यस विषयमा अझ गहिरो भाषाशास्त्रीय अनुसन्धान आवश्यक देखिन्छ।

### ६. "वन" संस्कृतबाट आयात या किरातबाट आत्मसात?

(Borrowing Direction)

“वन” शब्दको उत्पत्ति र विकासबारे बहस गर्दा भाषिक लेनदेनको दिशा—संस्कृतबाट किरात भाषामा, वा किरात भाषाबाट संस्कृतमा—निश्चित गर्नु महत्त्वपूर्ण हुन्छ। प्रायः प्राचीन भारतीय भाषिक अध्ययनहरूमा संस्कृतलाई स्रोत भाषा मान्ने प्रवृत्ति छ, तर पछिल्ला तुलनात्मक भाषाशास्त्रका अनुसन्धानहरूले यो धारणालाई चुनौती दिएका छन्। “वन” भन्ने शब्दको भाषिक उत्पत्ति र प्रवाहको दिशा (borrowing direction) को प्रश्न केवल भाषाशास्त्रीय होइन, सांस्कृतिक र ऐतिहासिक दृष्टिले पनि महत्त्वपूर्ण छ। परम्परागत रुपमा संस्कृतलाई भाषिक स्रोत (donor language) का रूपमा हेरिएको भए तापनि, आधुनिक भाषावैज्ञानिक अध्ययनहरूले संस्कृतमा अन्य भाषाहरू—विशेषतः आदिवासी भाषा समूहहरू—को ‘substrate प्रभाव’ रहेको देखाएका छन् (Emeneau, 1956; Masica, 1991)। यस सन्दर्भमा, संस्कृतमा प्रयोग हुने “वनम्” शब्दको उत्पत्तिको सम्भावित स्रोत किरात भाषाहरू हुन् कि भन्ने प्रश्न उठेको छ।

### *६.१ संस्कृतमा Substrate Influence को सम्भावना*

Emeneau (1956) ले भारतलाई भाषिक क्षेत्र (linguistic area) को रूपमा परिभाषित गर्दै इन्डो-आर्यन भाषाहरू (जस्तै, संस्कृत) मा द्राविड, मुण्डा, र अन्य स्थानीय भाषाहरूको गहिरो प्रभाव रहेको तर्क गरेका छन्। उनले प्रस्तुत गरेको ‘substrate theory’ अनुसार, संस्कृतले धेरै शब्दहरू गैर-इन्डो-युरोपेली भाषाहरूबाट आत्मसात् गरेको छ।

Masica (1991) ले पनि यही दाबीलाई पुष्टि गर्दै संस्कृत र अन्य इन्डो-आर्यन भाषाहरूमा द्राविड र मुण्डा तत्वहरूको व्यापकता उल्लेख गरेका छन्। तमिल भाषामा संस्कृतलाई परिभाषा गर्दा “सम+कृत” अर्थात् धेरै भाषाहरू पकाएर बनाइएको भाषा भनिन्छ। त्यसैले भाषाशास्त्रीहरू संस्कृत भाषालाई केवल भाषा भन्दा पनि

शब्दभण्डार भन्न उचित मान्दछन् (University of Madras, 1924–1936)। भारोपेली परिवार मानिएको संस्कृत भाषामा धेरै मात्रामा गैर-भारोपेली शब्दहरू पाइन्छन्  (Masica, 1991)।

उल्लिखित सिद्धान्तहरू प्रयोग गर्दा, संस्कृतले पूर्व–हिमाली क्षेत्रका 'किरात–तिब्बती भाषाहरू'बाट पनि केही शब्दहरू उधारो लिएको हुनसक्ने सम्भावना देखिन्छ। "वन" शब्द, जुन वैदिक संस्कृतमा 'vanam' रूपमा पाइन्छ, सम्भवतः संस्कृतमा स्वतन्त्र रूपमा विकास भएको नभई किरात भाषिक संसारबाट आत्मसात् गरिएको हुनसक्छ। यो दाबी त्यतिबेला सशक्त बन्छ जब "वन" शब्द किरात मौखिक परम्परा र सामाजिक संरचनामा अझ गहिरो र बहुआयामिक रूपमा पाइन्छ, संस्कृतको तुलनामा।

यस आधारमा, किरात भाषाहरू—जसले तिब्बती-बर्मेली भाषापरिवार अन्तर्गत पर्ने Kiranti शाखा प्रतिनिधित्व गर्छन्— जहाँबाट संस्कृतले शब्दहरू उधारो लिएको हुनसक्ने सम्भावना बलियो देखिन्छ। "वन" शब्द त्यस्तै सम्भावित एक उदाहरण हो, जुन संस्कृतमा 'vanam' को रूपमा पाइन्छ, तर किरात भाषाहरूमा यसको प्रयोग व्यापक, पुरानो र बहुआयामिक रूपमा देखिन्छ।

*६.२ सन्दर्भद्वारा प्रमाणित सम्भावना*

किरात मौखिक साहित्य—विशेषतः मुन्धुम/मुण्दुम—मा "वन" शब्दको प्रयोग कुनै सामान्य भौगोलिक सूचक होइन, बरु पवित्र उत्पत्तिको स्थल, आत्मा र देवत्वहरूको बासस्थानका रूपमा वर्णन गरिएको पाइन्छ। यो प्रयोग संस्कृतिक दृष्टिले गहिरो छ, जुन संस्कृतमा पाइने "वनम्" को सामान्य जंगलजन्य परिभाषाभन्दा फरक छ।

त्यस्तै, "बान्तवा" जस्तो थर–नामको भाषिक विश्लेषण गर्दा, यसको मूल "बन + तावा" → "वनबाट आएका" वा "वनको क्षेत्रका

वासिन्दा” भन्ने सामाजिक स्मृति स्पष्ट देखिन्छ। यो थर–नाम केवल जातीय परिचय नभई भूगोल र आध्यात्मिक उत्पत्तिको एक सांस्कृतिक इतिहास हो। बान्तवा नामले “वन” शब्दको सामाजिक, सांस्कृतिक र जातीय मूल्य झल्काउँछ— साथै किरात जनसमुदायमा वनलाई पवित्रता, उत्पत्ति र आत्मिक सन्तुलनसँग गाँसिएको प्रतिकका रूपमा बुझिन्छ।

यसबाहेक, किरात समुदायमा “वन” शब्द कुनै सामान्य वनजंगलको बिम्ब मात्र नभई पवित्रता, शक्ति र संरक्षणको प्रतीकको रूपमा स्थापित छ। संस्कृतमा जहाँ “वनम्” शब्द सामान्यतः भौगोलिक पर्यायको रूपमा प्रयोग हुन्छ, किरात समाजमा भने यसको प्रयोग आध्यात्मिक र सांस्कृतिक सन्दर्भमा अझ गहिरो र प्रतिकात्मक छ।

यी तथ्यहरूले संकेत गर्छन् कि “वन” शब्द संस्कृतमा केवल स्थानीय पर्यावरणसँग सम्बन्धित कुनै शब्द हो भन्ने व्याख्या अधुरो हुनसक्छ। यसको सट्टा, यो शब्द किरात भाषाहरूको सांस्कृतिक संरचना, मिथकीय चेतना र भाषिक इतिहासमा गहिरो जरा गाडिएको छ।

*टिप्पणी*

भाषिक उधारो प्रवाहको सन्दर्भमा “वन” शब्द संस्कृतबाट किरात भाषामा गएकोभन्दा पनि, किरात भाषिक–सांस्कृतिक प्रणालीबाट संस्कृतले आत्मसात् गरेको शब्द हो भन्ने तर्क आजको भाषाशास्त्रीय साक्ष्यहरूद्वारा बढी मजबुत देखिन्छ। यसले ‘भाषिक केन्द्र–सीमान्त’ को परम्परागत दृष्टिकोणमा पुनर्विचार गर्नुपर्ने आवश्यकता औंल्याउँछ—जहाँ संस्कृतलाई मात्र “आगन्तुक स्रोत भाषा” हैन, कहिलेकाहीं “ग्रहणकर्ता भाषा” को रूपमा पनि बुझ्न सकिन्छ।

## ७. संस्कृत तथा बोन/किरात: कुन पुरानो?

संस्कृत भाषा, विशेषतः ऋग्वेदमा प्रयोग भएको वैदिक संस्कृत, इतिहासमा सबैभन्दा पुराना लिखित इन्डो-आर्यन भाषाका रूपमा (\~1500 BCE) मानिन्छ (Witzel, 1995)। यसको विकास वैदिक सभ्यता र ब्राह्मण परम्परासँग गासिएको छ। यद्यपि, संस्कृतको लिखित प्रमाण पुरानो भए पनि त्यसले अन्य मौखिक परम्परामा आधारित भाषाहरूप्रति प्राचीनता वा मौलिकता स्वयंसिद्ध हुँदैन।

किरात भाषाहरू—विशेषतः Kiranti भाषाशाखा (राई, लिम्बू आदिको मूल भाषा)—लेखनमा आधारित नभए पनि भाषाशास्त्रीय दृष्टिकोणले यी भाषाहरूको विकास 'Proto-Kiranti' तहमा झण्डै २५०० BCE वा त्योभन्दा अगाडिबाट भएको मानिन्छ (van Driem, 2001)। यी भाषाहरू 'Tibeto-Burman' भाषापरिवारभित्र पर्दछन्, जसको विकास इन्डो-आर्यन भाषाहरू भन्दा अघिदेखि भएको थियो (Benedict, 1972)।

यस्तै, किरातको मौलिक धार्मिक परम्परा बोन धर्म (Bon religion) लाई बौद्ध धर्मभन्दा पुरानो, pre-Buddhist शमानी धर्मको रूपमा लिइन्छ (Snellgrove, 1967; Tucci, 1980)। बोन धर्ममा आत्मा, प्रकृति, र पूर्वजपूजाको गहिरो उपस्थिति छ—जसको समरूपता किरात समुदायको मुन्धुम/मुण्दुम' संस्कारसँग पाइन्छ। यी सबै परम्पराहरू Indo-Aryan सभ्यताअघि नै स्थापित भएको प्रमाण इतिहास र भाषा विज्ञान दुवैले देखाउँछन्।

त्यसैले, यथार्थमा "संस्कृत पुरानो, बाँकी नयाँ" भन्ने सामान्यीकरण भाषिक वा सांस्कृतिक दृष्टिकोणले सन्तुलित छैन। बरु, बोन धर्म र किरात मुण्दुम संस्कारहरू संस्कृत र वैदिक प्रभावभन्दा पुराना, मौलिक संस्कारहरू हुन् (Waters, 2004)।

त्यस्तै, “वन” (वनम्) शब्द संस्कृतमा पाइन्छ भन्दैमा त्यसको मूल संस्कृतमै हो भन्ने मान्यता भाषाशास्त्रीय दृष्टिले त्रुटिपूर्ण हुन सक्छ। आधुनिक भाषाविज्ञानले यस्तो प्रक्रियालाई ‘substrate borrowing’ भनिन्छ—जहाँ प्रभावशाली भाषाले पुराना स्थानीय भाषाबाट शब्द आत्मसात् गर्छ (Emeneau, 1956; Masica, 1991)। यस सन्दर्भमा “वन” शब्दको प्रयोग किरात/बोन संस्कारमा धार्मिक–सांस्कृतिक प्रतीकको रूपमा पहिले नै रहेकाले, संस्कृतले त्यो शब्द आदिवासी स्रोतबाट उधारो लिएको हुनसक्छ।

*टिप्पणी:*

संस्कृत लेखित रूपमै पुरानो भए पनि, किरात भाषाहरू मौखिक परम्परा र भाषिक साक्ष्यका आधारमा अझ पुराना हुनसक्छन्। बोन धर्म र किरात मुण्दुम संस्कारहरू pre-Vedic शमानी परम्पराको अंश हुन्। “वन” जस्ता शब्दहरू संस्कृतले स्थानिय भाषाबाट आत्मसात् गरेको सम्भावना उच्च छ।

## ८. निष्कर्ष: मानवकेन्द्रित भाषिक विश्लेषण

(Humanistic-Linguistic Conclusion)

यस अध्ययनको आधारमा, "वन" शब्दको उत्पत्तिसम्बन्धी व्याख्याले केवल संस्कृत भाषाको तत्सम शब्दकोरमा सीमित भएर बुझ्दा अपूरो र एकपक्षीय ठहरिन्छ। यद्यपि संस्कृतमा “वनम्” भन्ने शब्द पुराना वैदिक ग्रन्थदेखि देखिन्छ (Witzel, 1995), यो तथ्य मात्रले उक्त शब्दको मौलिकता संस्कृतमै छ भन्ने सुनिश्चित गर्दैन। भाषाशास्त्रमा "substrate borrowing" भन्ने सिद्धान्त अनुसार कुनै प्रभुत्वशाली भाषाले अन्य पुराना, लिपिविहीन भाषाहरूबाट शब्दहरू आत्मसात् गर्नसक्ने सम्भावना स्वीकार्य छ (Emeneau, 1956; Masica, 1991)।

किरात समुदायका मौलिक भाषा–संस्कारहरू—जस्तै बान्तवा (वन+तावा), बोन (शमानी धर्म), र बनझाँक्री (वनगुरु)—प्राकृतिक परिवेशसँग जोडिएका छन्। यी शब्दहरू Kiranti भाषाशाखामा विशेषगरी बान्तवा, सम्शारिक र लिम्बु भाषाहरूमा गहिरो रूपमा जरा गाडेर बसेका छन्, जसको ध्वन्यात्मक, सांस्कृतिक र धार्मिक प्रयोग Proto-Kiranti काल (~2500 BCE) वा त्योभन्दा पहिलेसम्म पुग्न सक्छ (van Driem, 2001; Benedict, 1972)।

बोन धर्म तथा मुन्धुम/मुण्दुम संस्कारहरू संस्कृत–वैदिक प्रभावभन्दा पुराना पूर्व-बौद्ध शमानी परम्पराहरूको निरन्तरता हुन् (Snellgrove, 1967; Tucci, 1980)। किरात समुदायमा “वन” शब्द केवल भौगोलिक स्थानका रूपमा होइन, एक पवित्र शक्ति, आत्मिक संरक्षक, र सांस्कृतिक आस्था–केन्द्रको रूपमा उपस्थित छ। यसको प्रयोग प्रकृति र आत्मासँगको संवादमा हुन्छ—जुन संस्कृतिकालीन "वनम्" को सामान्य अर्थभन्दा धेरै गहिरो छ।

त्यसैले यो भन्न सकिन्छ कि:

- "वन" शब्द संस्कृतमा तत्सम भए पनि यसको आधार किरात/बोन मौलिकता, ध्वन्यात्मक रूपान्तरण, र धार्मिक–सांस्कृतिक अर्थ–विस्तारमा गहिरो गाडिएको हुनसक्छ।

- संस्कृत भाषाले "वन" शब्दलाई स्थानीय आदिवासी भाषिक संरचनाबाट आत्मसात् गरेको सम्भावना सशक्त छ, जुन भारतको भाषिक इतिहासमा substrate influence को उदाहरण हो।

- किरात समुदायको मौलिक ज्ञान, भाषिक परम्परा, र मिथकीय विश्वासहरूले भाषिक सम्पदा निर्माणमा स्वतन्त्र र मौलिक भूमिका निर्वाह गरेका छन्—जसले प्राचीन संस्कृत मात्र होइन, समग्र दक्षिण एसियाली भाषिक विकासलाई प्रभाव पारेको देखिन्छ।

## सन्दर्भ सूची


Benedict, P. K. (1972). Sino-Tibetan: A conspectus. Cambridge University Press.

Emeneau, M. B. (1956). India as a linguistic area. Language, 32(1), 3–16. https://doi.org/10.2307/410649

Hoffman, H. (1961). The religion of Tibet. Allen & Unwin.

Masica, C. P. (1991). The Indo-Aryan languages. Cambridge University Press.

Rai, R. K. (2025). Constructing Ethnicity and Identity of Bantawa Rai in Eastern Nepal. American Journal of Society and Law ( AJSL). 4 (1) pp67-72. DOI: 10.54536/ajsl.v4i1.4698

Snellgrove, D. L. (1967). The nine ways of Bon: Excerpts from gZi-brjid. Oxford University Press.

Tucci, G. (1980). The religions of Tibet. University of California Press.

University of Madras. (1924–1936). Tamil lexicon (Vols. 1–6). Madras University Press.

van Driem, G. (2001). Languages of the Himalayas: An ethnolinguistic handbook of the greater Himalayan region. Brill Academic Publishers.

Waters, T. (2004). Origins of the Vedic culture: The Indo-Aryan migration debate. Cambridge University Press.

Witzel, M. (1995). Early Sanskritization: Origins and development of the Kuru state. Electronic Journal of Vedic Studies, 1(4), 1–26.

*Introduction to the Author*

Dr. Nawa Raj Subba is a Nepali researcher, author, and thinker who has worked in Nepal's health system for over 30 years. His work bridges public health, social science, and indigenous knowledge, with a focus on policy, governance, and community health. In addition to publishing academic research, he has made significant contributions to the study of literature and culture in Nepal. Dr. Subba continues to engage in multidisciplinary research aimed at developing evidence-based and culturally informed development strategies.

ORCID: https://orcid.org/0000-0001-5700-2179